# कार्यक्रम तालिका

| मिति | स्थान | कार्यक्रम | स्थानीय संयोजक |
|---|---|---|---|
| २०७३ असोज ६ साँझ | गुलरिया (बर्दिया) | नाटक आधा सत्य मञ्चन | भागीराम चौधरी |
| २०७३ असोज ७ बिहान | गुलरिया (बर्दिया) | अन्तर्क्रिया तथा चौतारी नाटक | भागीराम चौधरी |
| २०७३ असोज ८ बिहान | राजापुर (बर्दिया) | अन्तर्क्रिया तथा चौतारी नाटक | मायाराम चौधरी |
| २०७३ असोज ८ साँझ | राजापुर (बर्दिया) | नाटक आधा सत्य मञ्चन | मायाराम चौधरी |
| २०७३ असोज ९ साँझ | लम्की (कैलाली) | नाटक आधा सत्य मञ्चन | प्रेम बयक |
| २०७३ असोज १० साँझ | भुरीगाउँ (बर्दिया) | नाटक आधा सत्य मञ्चन | सरीता थापा |
| २०७३ असोज ११ बिहान | भुरीगाउँ (बर्दिया) | अन्तर्क्रिया वा चौतारी नाटक | सरीता थापा |
| २०७३ असोज १२ साँझ | धदवार (बर्दिया) | नाटक आधा सत्य मञ्चन | निरञ्जन चौधरी |
| २०७३ असोज १३ बिहान | धदवार (बर्दिया) | अन्तर्क्रिया तथा चौतारी नाटक | निरञ्जन चौधरी |
| २०७३ असोज १३ साँझ | बाँसगडी (बर्दिया) | नाटक आधा सत्य मञ्चन | भगीराम चौधरी<br>निरञ्जन चौधरी<br>सरीता थापा |
| २०७३ असोज १५ साँझ | घोराही (दाङ) | नाटक आधा सत्य मञ्चन | सुशिला चौधरी |
| २०७३ असोज १६ बिहान | घोराही (दाङ) | अन्तर्क्रिया तथा चौतारी नाटक | सुशिला चौधरी |

सहयोगी

जर्मन सहयोग
DEUTSCHE ZUSAMMENARBEIT

giz Deutsche Gesellschaft für Internationale Zusammenarbeit (GIZ) GmbH

Ziviler Friedensdienst
Civil Peace Service

mandala theatre-nepal

## रंगमञ्च र कलाको माध्यमबाट

# विगतसँग व्यवहार



## स्मृतिका लागि मण्डलाको घुम्ती रंगमञ्च भ्रमण कार्यक्रम

आयोजना सहयोगी:

बेपत्ता परिवार राष्ट्रिय सञ्जाल नेपाल
National Network of Families of Disappeared & Missing Nepal

## कार्यक्रमको बारेमा

जीआइजेडको नागरिक शान्ति सेवा (सिभिल पिस सर्भिस) कार्यक्रमले द्वन्द्व रुपान्तरण तथा शान्ति निर्माणका लागि काम गर्ने गरेको छ । सशस्त्र द्वन्द्वका क्रममा द्वन्द्वरत दुवै पक्षबाट पीडित भएका र राज्यबाट सम्बोधन नगरिएका नागरिकहरुको पक्षमा काम गर्न जीआइजेडको यो कार्यक्रमले मण्डला थिएटर नेपालसँग विगत दुई वर्षदेखि सहकार्य गर्दै आइरहेको छ । बेपत्ता पारिएका नागरिक तथा उनीहरुका परिवारहरुको सन्दर्भमा काम गर्न बेपत्ता परिवार राष्ट्रिय सञ्जाल र मण्डला थिएटर नेपालले मिलेर कार्यक्रमहरु गरिरहेका छन् । हरेक वर्ष अगस्त ३०मा बेपत्ताविरुद्धको अन्तर्राष्ट्रिय दिवसअर्न्तगत यस्ता कार्यक्रमहरु गरिदै आएका छन् । यसरी रंगकर्मी, द्वन्द्वपीडित परिवार र अभियानकर्ताहरुसँग काम गरीरहँदा पीडितका आवाजहरुलाई आम जनमानिस र सम्बन्धित निकायसम्म पुऱ्याउन नाटक र अन्य कलात्मक माध्यमहरुले महत्वपूर्ण भूमिका खेल्ने महशुस सबैलाई भएको छ ।
यस वर्ष पनि सोही दिवसको अवसरमा कार्यक्रम गर्ने क्रममा बेपत्ता पारिएका नागरिका परिवारसँगको कुराकानी पछि प्राप्त उनीहरुको जीवन भोगाईलाई आधार मानेर नाटक आधा सत्य तयार पारिएको हो । यो नाटकसँगसँगै हामी तपाईहरु माझ कलाका विभिन्न माध्यमबाट अन्तर्क्रिया गर्न आइपुगेका छौं । हामीसँग चौतारी नाटकका कलाकारहरु पनि छन् । हामी चाहन्छौं- द्वन्द्वपीडितका पीडा, न्यायको लडाई र सत्यको पर्खाइ अव ती परिवारको मात्र नरहोस् र यो हामी सबैको साझा मुद्दा बनोस् ।
यो नाटक यात्रा खासगरी जम्मा १५ दिनको छ । यो १५ दिनमा हामी बर्दिया, कैलाली र दाङका विभिन्न समुदायमा पुगेर नाटक मञ्चन, अन्तर्क्रिया र चौतारी नाटक गर्नेछौं ।

## नाटक "आधा सत्य"को कथासार

बेपत्ता पारिएको आफ्नो बुबा खोज्दै शहर हिडेका श्रीमान श्रीमती एउटा घरमा बास माग्न पुग्छन् । बास माग्ने क्रममा गफ गर्दै जाँदा उक्त घरको मुल मान्छेलाई पनि खोलाको किनारमा बोलाएर विद्रोहीहरुले बेपत्ता पारेका हुन्छन् । आफ्नो श्रीमान् बेपत्ता भए पछि एक छोरा र एक छोरीलाई हुर्काएर पढाएको बढाएको कुरा गर्छिन घरकी महिलाले । त्यसपछि भोलि पल्ट बिहानै श्रीमान श्रीमती यात्रामा हिँड्न लाग्दा घरकी महिलाले पनि साथ दिन्छिन् ।
अबको यात्रामा तीनै जना अघि बढ्छन् । मधेस आइपुगिसकेपछि थकाईमार्न तीनै यात्रीहरु बसेको बेला पानी खाने बाहानामा जानकी चौधरीसँग उनीहरुको भेट हुन्छ । जानकी घरमा पुग्दा जानकीको दाजुलाई स्कुलमा पढाउँदा पढाउँदै कोहि नचिनेका मान्छेहरुले लगेका र अहिले सम्म पनि केहि खबर नआएको कुरा सुनाउँछिन् जानकीले । यात्रामा हिडेकी महिलाले जानकीलाई आफ्ना मान्छे खोज्न जाऔं भन्दा जानकी आफ्नो बुढो भएको बाबुलाई एक्लै छोडेर जान नसक्ने भन्दै यात्रामा सामेल हुन्नन् । ती तीन यात्रीहरु अघि बढ्छन् ।
काठमाण्डौ हिडेका उनीहरुले गाडीमा एक युवतीसँग गफगाफ गर्दा उनी पनि काठमाण्डौ नै आफ्नो श्रीमानको पत्तो लगाउन हिडेकी भन्ने थाहा पाउँछन् । स्वस्थ्य चौकीमा काम गर्ने आफ्नो श्रीमानले विद्रोहिलाई उपचार गरिदिएको कारणले सेनाहरुले बेपत्ता पारेको कुरा गर्छिन् ।
यात्राको क्रममा गाडी अघि बढिरहँदा एकाएक एक भुतपुर्वसिपाहीले गाडी रोक्छ र चेकिङ गर्न थाल्छ । उसले सामान र पोको पन्तुरो भन्दा पनि छोरी मान्छेहरुको अनुहार हेरिरहेको हुन्छ । आफू सेना भएकै कारण विद्रोहीहरुले आफ्नी श्रीमतीलाई बेपत्ता पारिदिएको हुन्छ उसको । त्यहिँ देखि भौतारिँदै आफ्नो श्रीमतीको खोजीमा निस्किएको ऊ यात्रामा अघि बढ्दैन । कागजपत्रले आफ्नाहरुलाई फेला नपारिदिएको र आफ्नै शैलीमा श्रीमती खोजिरहेको हुन्छ ।
उनीहरुको यात्रामा कहिले राजनीतिक पार्टीहरु त कहिले सरकारहरु आश्वासन दिन आउँछन् र घरर फर्किन नैतिक दबाब दिन्छन् तर यात्रीहरु यो पटक कसैको पनि कुरा नसुनी आफ्ना मान्छेको पत्तो लगाएरै छोड्ने अठोट गर्छन् र अघि बढ्छन् ।
काठमाण्डौ आइपुगेर एउटा चिया पसलमा उनीहरु गफ गरिरहेको बेलमा एक पत्रकारलाई भेट्छन् । पत्रकारले उनीहरुको यात्राको बारेमा सुनेपछि आफ्नी छिमेकी रुपासँग भेट गराइदिन्छ । आफ्नो मुर्तीकार बाबुलाई एकै छिनमा फर्काइदिन्छु भनेर सेनाले लगेको अहिले सम्म पनि कुनै खबर नपाएको हुन्छिन् । मरण र सासको दोसाँधमा झुण्डिएकी उनकी हजुरामा र बाबुको पत्तो लगाउन प्रत्येक दिन किताबको नक्सामा आर्मीहरुको ब्यारेग खोज्दै बसेकी बहिनीको अभिभावक बनेर समय कटाइरहेकी हुन्छीन् ।
पत्रकारले उनीहरु सबैलाई एकै ठाउँमा ल्याउँछ । यात्रीहरु र रुपाले बेपत्ता पारिएका आफ्नाहरुले छोडेको सम्झनाको भारी बिसाउँछन् मञ्चमा र दर्शकहरुलाई सम्बोधन गर्छन् पालै पालो । सबै सदस्यहरुको एउटै साझा प्रश्न हुन्छ कि अझै कति दिन पर्खने ?

## निर्देशकीय

मानिसहरु आफ्नो बारेमा मात्र सोचिरहेको बेला म पनि त्यस्तै सोचीहिंड्छु होला । तर समाज व्यवस्थाको रितिथिती बिग्रिएको बेला रमिते बनेर बस्न नसकिदोरहेछ । तथाकथित मानिने राजनैतिक विचलनको नियती मैले पनि भोगिरहेको छु र यस्तो हामी बाँचुञ्जेल भईरहन्छ होला । अनि म बेलाबेला बौलाइरहन्छु । म यस्तो व्यग्र मनस्थितीको कुरा नाट्य कलाबाट मात्र अभिव्यक्त गर्न सक्छु, र त्यहि गरैं । यस्तो बिचलनको बेला मलाई पनि बेपत्ता पार्न सक्छन् । यहि मेरो दर्ता रेकर्ड भयो । पत्ता लगाउन सजिलो हुनेछ ।

राजन्

**मञ्चमाः** प्रकाश गन्धर्व, रन्जना ओली, जीवन भट्टराई, विजया कार्की, विनिता गुरुङ इँगिहोपो कोइँच सुनुवार, रोहित पौडेल, शक्ति राई, निल कुमारी चौधरी, सिर्जना सुब्बा, उमेश तामाङ्ग र आकांक्षा कार्की

**नेपथ्यमा**
मञ्च सामाग्रीः शक्ति राई, जीवन भट्टराई र बिनिता गुरुङ
वेशभुषाः आकांक्षा कार्की र विजया कार्की
प्रकाश परिकल्पनाः उमेश तामाङ
प्राविधिक सहयोगीः इँगिहोपो कोइँच सुनुवार र रोहित पौडेल
संगीतः निमिश कट्टेल
कविताः तीर्थ श्रेष्ठ र सौरभ कार्की
पोष्टर/विवरण पुस्तिकाः इँगिहोपो कोइँच सुनुवार र सिजन दाहाल
नाट्य आलेखः राजन खतिवडा र सिजन दाहाल
निर्देशन सहयोगीः सिजन दाहाल
परिकल्पना तथा निर्देशनः राजन खतिवडा